# मानव अधिकारको विश्वव्यापी घोषणापत्र

**१० डिसेम्वर १९४८ मा संयुक्त राष्ट्र संघको महासभाद्धारा पारित प्रस्ताव नं. २१७ क (३) बाट ग्रहण र घोषणा गरिएको**

**प्रस्तावना**

मानव परिवारका सबै सदस्यहरुमा अन्तरनिहित प्रतिष्ठा तथा सम्मान र अविच्छिन्न अधिकारहरुको मान्यता नै विश्वमा स्वतन्त्रता, न्याय र शान्तिको आधार भएकोले,

मानव अधिकारप्रति अवहेलना र अनादरको परिणाम स्वरुप मानव जातिको अन्तस्करणलाई नै आहत गर्ने बर्वरतापूर्ण कामहरु भएका र मानव जातिले आस्था र वाक स्वतन्त्रताको तथा भय र अभावबाट मुक्तिको उपभोग गर्न पाउने विश्वको सिर्जना सर्वसाधारण जनताको उच्चतम् आकांक्षाको रुपमा घोषित भएकोले,

अत्याचार र दमनको विरुद्ध अन्तिम उपायको रुपमा विद्रोह गर्न मानिसलाई बाध्य नगराउनका लागि कानूनको शासनद्वारा मानव अधिकारको संरक्षण गर्न अत्यावश्यक भएकोले,

राष्ट्रहरुका बीच मैत्रीपूर्ण सम्वन्ध विकास प्रवर्द्धन गर्न अत्यावश्यक भएकोले,

संयुक्त राष्ट्र संघका जनताहरुले वडापत्रमा मौलिक मानव अधिकारहरुमा व्यक्तिको प्रतिष्ठा तथा मूल्यमा र महिला तथा पुरुषका समान अधिकारहरुमा आफ्नो विश्वास पुनः पुष्टि गरेको र व्यापक तर स्वतन्त्रतामा सामाजिक प्रगति र अझ राम्रो जीवनस्तर प्रवर्द्धन गर्न उनीहरु दृढ भएकोले,

सदस्य राष्ट्रहरुले संयुक्त राष्ट्र संघसँगको सहयोगमा मानव अधिकार र मौलिक स्वतन्त्रताहरुको विश्वव्यापी सम्मान र पालनाको प्रवर्द्धन हासिल गर्न प्रतिज्ञा गरेकोले, र

यो प्रतिज्ञाको पूर्ण प्राप्तिको लागि यी अधिकार र स्वतन्त्रताहरुको साझा वोध सर्वोत्तम महत्वको कुरा भएकोले,

**महासभाले**

यस मानव अधिकारको विश्वव्यापी घोषणापत्रलाई सबै जनताहरु र सबै राष्ट्रहरुले हासिल गर्ने एक साझा मापदण्डको रुपमा घोषणा गर्दछ र यस उद्देश्यका लागि प्रत्येक व्यक्ति र समाजका

प्रत्येक अंगले यस घोषणापत्रलाई निरन्तर ध्यानमा राखी शिक्षण र शिक्षाको माध्यमबाट यी अधिकार र स्वतन्त्रताहरु प्रतिको सम्मान प्रवर्द्धन गर्न र राष्ट्रिय तथा अन्तर्राष्ट्रिय प्रगतिशील उपायहरुको माध्यमबाट सदस्य राष्ट्रहरु स्वयंका जनता बीच र उनीहरुका क्षेत्राधिकार अन्तर्गतका इलाकाका जनता बीच यी अधिकार र स्वतन्त्रताहरुको विश्वव्यापी तथा प्रभावकारी मान्यता र पालना सुनिश्चित गर्न प्रयत्न गर्नेछ ।

**धारा १**

सबै व्यक्तिहरु जन्मजात स्वतन्त्र र प्रतिष्ठा तथा अधिकारमा समान हुन्छन् । उनीहरु विवेक र अन्तस्करणले युक्त भएका हुन्छन् । उनीहरुले भातृत्वको भावना लिएर एक अर्काप्रति व्यबहार गर्नुपर्छ ।

**धारा २**

जाति, वर्ण, लिंग, भाषा, धर्म, राजनैतिक वा अन्य विचारधारा, राष्ट्रिय वा सामाजिक उत्पत्ति, सम्पत्ति, जन्म वा अन्य कुनै हैसियत जस्ता कुनै पनि आधारमा कुनै पनि किसिमको भेदभाव विना प्रत्येक व्यक्तिलाई यस घोषणापत्रमा उल्लिखित अधिकार र स्वतन्त्रताहरुको अधिकार हुनेछ

साथै कुनै पनि व्यक्ति रहेका मुलुक वा इलाका स्वतन्त्र, न्यास, स्वशासन रहित वा सार्वभौमसत्ताको अन्य कुनै पनि सीमाको अधिनमा रहेको जे भए तापनि त्यस्तो मुलुक वा ईलाकाको राजनीतिक, क्षेत्राधिकारगत वा अन्तर्राष्ट्रिय हैसियतका आधारमा कुनै पनि भेदभाव गरिनेछैन ।

**धारा ३**

प्रत्येक व्यक्तिलाई जीवनको स्वतन्त्रता र सुरक्षाको अधिकार हुनेछ ।

**धारा ४**

कसैलाई बाँधा वा दास बनाई राखिने छैन । कुनै पनि किसिमको दासत्व र दास व्यापारलाई निषेध गरिने छ ।

**धारा ५**

कुनै पनि व्यक्तिलाई शारीरिक यातना दिईने वा क्रुर, अमानवीय वा अपमानजनक व्यबहार वा सजाय गरिने छैन ।

**धारा ६**

कानूनको दृष्टिमा प्रत्येक व्यक्तिलाई सर्वत्र व्यक्तिको रुपमा मान्यता पाउने अधिकार हुने छ ।

**धारा ७**

सबै व्यक्तिहरु कानूनको दृष्टिमा समान र कुनै पनि भेदभाव विना कानूनको समान संरक्षणका हकदार छन् । सबै व्यक्तिहरुलाई यस घोषणापत्रको उल्लंघन गरी गरिएको कुनै पनि प्रकारको भेदभाव विरुद्ध वा त्यस्तो भेदभावको दुरुत्साहन विरुद्ध समान संरक्षण पाउने अधिकार हुनेछ ।

**धारा ८**

प्रत्येक व्यक्तिलाई संविधान वा कानूनद्वारा प्रद्धत मौलिक अधिकारहरुको उल्लघंन गर्ने कार्यहरु विरुद्ध सक्षम राष्ट्रिय न्यायाधिकारणहरुबाट प्रभावकारी उपचार पाउने अधिकार हुनेछ ।

**धारा ९**

कसैलाई पनि स्वेच्छाचारी रुपले गिरफ्तार गरिने, नजरबन्दमा राखिने वा देश निकाला गरिनेछैन ।

**धारा १०**

कुनै पनि व्यक्ति उपर लगाईएको फौजदारी अभियोगको र निजको अधिकार तथा दायित्वको निरोपण गर्दा स्वतन्त्र र सक्षम न्यायाधिकरणबाट निष्पक्ष र सार्वजनिक सुनवाई गरी पाउने पूर्ण समानताको हक त्यस्तो व्यक्तिलाई हुनेछ ।

**धारा ११**

(१) दण्डनीय कसूरको अभियोग लागेको प्रत्येक व्यक्तिलाई आफ्नो प्रतिरक्षाको लागि आवश्यक सबै प्रत्याभूतिहरु प्राप्त भएको सार्वजनिक सनुवाईमा कानून वमोजिम दोषि प्रमाणित नभएसम्म निर्दोष भएको अनुमान गरी पाउने अधिकार हुनेछ ।

(२) कुनै कार्य गर्दा वा नगर्दाको वखत राष्ट्रिय वा अन्तर्राष्ट्रिय कानून अन्तर्गत दण्डनीय कसूर नमानिने त्यस्ता कार्यका लागि कुनै पनि व्यक्तिलाई दण्डनीय कसुरको दोषि ठहराइने छैन । नत सो दण्डनीय कसूर गर्दाका बखत लागू रहेको सजाय भन्दा बढी सजायनै गरिनेछ ।

**धारा १२**

कुनै पनि व्यक्तिको गोपनियता, परिवार, घर वा पत्रचारमा स्वेच्छाचारी वा गैरकानूनी हस्तक्षेप

गरिने छैन न त निजको प्रतिष्ठा तथा ख्यातीमा गैरकानूनी आक्रमण नै गरिने छ । प्रत्येक व्यक्तिलाई त्यस्तो हस्तक्षेप वा आक्रमण विरुद्ध कानूनको संरक्षण पाउने अधिकार हुनेछ ।

**धारा १३**

१. प्रत्येक व्यक्तिलाई प्रत्येक राष्ट्रको सीमानाभित्र आवतजावत गर्ने तथा आफ्नो आवास रोज्न पाउने स्वतन्त्रताको अधिकार हुनेछ ।

२. प्रत्येक व्यक्तिलाई आफ्नो देश लगायत कुनै पनि देश छोड्न पाउने र आफ्नो देश फर्कन पाउने अधिकार हुनेछ ।

**धारा १४**

१. प्रत्येक व्यक्तिलाई गैर कानूनी विभेद, डर, त्रास, दुर्व्यवहार वा यातना (persecution) बाट उम्किन अन्य मुलुकमा शरण खोज्ने र लिने अधिकार छ ।

२. गैर-राजनीतिक अपराधहरु वा संयुक्त राष्ट्र संघका उद्देश्य र सिद्धान्तहरु विरुद्धका कार्यहरुबाट वास्तविक रुपमा उत्पन्न मुद्दाहरुमा यो अधिकारको उपभोग गर्न सकिनेछैन ।

**धारा १५**

१. प्रत्येक व्यक्तिलाई राष्ट्रियताको अधिकार हुनेछ ।

२. कुनै पनि व्यक्तिलाई स्वेच्छाचारी ढंगले निजको राष्ट्रियताबाट वञ्चित गरिने छैन नत राष्ट्रियता परिवर्तन गर्ने अधिकारबाट नै वञ्चित गरिनेछ ।

**धारा १६**

१. उमेर पुगेका पुरुष तथा महिलालाई जाति, राष्ट्रियता वा धर्मको कारणले लगाईने कुनै पनि सीमा विना विवाह गरी परिवार बसाउने अधिकार हुनेछ । उनीहरुलाई विवाह गर्दाका बखत, वैवाहिक सम्वन्ध रहँदाका बखत र विवाह विच्छेदका वखत समान अधिकारहरु प्राप्त हुनेछ ।

२. इच्छुक वरवधुको स्वतन्त्र तथा पूर्ण मन्जुरी बिना विवाह सम्पन्न गरिने छैन ।

३. परिवार समाजको प्राकृतिक तथा मौलिक समूह इकाई हो र परिवारले समाज तथा राष्ट्रबाट संरक्षण पाउनेछ ।

**धारा १७**

१. प्रत्येक व्यक्तिलाई एक्लै एवं अरुसँग मिलेर सम्पत्ति राख्ने अधिकार हुनेछ ।

२. कुनै पनि व्यक्तिलाई स्वेच्छाचारी ढंगले निजको सम्पत्तिबाट वन्चित गरिनेछैन ।

**धारा १८**

प्रत्येक व्यक्तिलाई विचार, सदविवेक तथा धर्मको स्वतन्त्रताको अधिकार हुनेछ । यस अधिकारमा आफूले रोजेको धर्म वा आस्था परिवर्तन गर्ने स्वतन्त्रता र व्यक्तिगत रुपमा वा अरुसँग मिलेर तथा सार्वजनिक वा निजी रुपमा पूजाआजा, नियम, अभ्यास तथा शिक्षणमा आफ्नो धर्म वा आस्था प्रकट गर्न पाउने स्वतन्त्रता समेत समावेश हुनेछ ।

**धारा १९**

प्रत्येक व्यक्तिलाई विचार र अभिव्यक्ति स्वतन्त्रताको अधिकार हुनेछ । यस अधिकारमा विना हस्तक्षेप आफ्ना विचारहरु राख्न पाउने स्वतन्त्रता, सीमानाको बन्देज विना कुनै पनि माध्यम मार्फत सूचना र विचारहरु प्राप्त गर्ने, खोज्ने तथा प्रसार गर्ने स्वतन्त्रता समेत समावेश हुनेछ ।

**धारा २०**

१. प्रत्येक व्यक्तिलाई शान्तिपूर्वक सभा गर्ने र संगठनको स्वतन्त्रताको अधिकार छ ।

२. कुनै पनि व्यक्तिलाई कुनै पनि संगठनमा लाग्न बाध्य गराउन सकिने छैन ।

**धारा २१**

१. प्रत्येक व्यक्तिलाई प्रत्यक्ष वा स्वतन्त्र रुपले छानिएका प्रतिनिधिहरु मार्फत आफ्नो देशको सरकारमा भाग लिन पाउनेअधिकार छ ।

२. प्रत्येक व्यक्तिलाई आफ्नो देशको सार्वजनिक सेवामा समान पहुँच पाउने अधिकार छ ।

३. जनताको इच्छा नै सरकारको अख्तियारीको आधार हुनेछ । यो इच्छा विश्वव्यापी र समान मताधिकारद्धारा हुने आवधिक र निष्पक्ष निर्वाचनहरुद्धारा अभिव्यक्त गरिनेछ र यस्तो निर्वाचन गोप्य मतदान वा त्यस्तै स्वतन्त्र मतदान प्रकृयाहरुबाट सम्पन्न हुनेछ ।

**धारा २२**

प्रत्येक व्यक्तिलाई समाजको एक सदस्यको हैसियतले सामाजिक सुरक्षाको अधिकार हुने र राष्ट्रिय प्रयत्न र अन्तर्राष्ट्रिय सहयोग मार्फत र प्रत्येक राष्ट्रको संगठन र श्रोतहरु अनुरुप निजको प्रतिष्ठाकोलागि र निजको व्यक्तित्वको स्वतन्त्र विकासको लागि अपरिहार्य आर्थिक, सामाजिक र सांस्कृतिक अधिकारहरुको प्रप्तिको अधिकार हुनेछ ।

**धारा २३**

१. प्रत्येक व्यक्तिलाई कामको, रोजगारीको स्वतन्त्र छनौटको, कामका उपयुक्त र अनुकूल अवस्थाहरुको र वेरोजगारी विरुद्धको संरक्षणको अधिकार छ ।

२. प्रत्येक व्यक्तिलाई कुनै पनि भेदभाव विना समान कामको लागि समान पारिश्रमिकको अधिकार छ ।

३. काम गर्ने प्रत्येक व्यक्तिलाई आफ्नो र आफ्नो परिवारको लागि मानवीय प्रतिष्ठा अनुकूलको स्थितिको विद्यमानता सुनिश्चित गर्ने कामका उपयुक्त र अनुकूल अवस्थाहरुको अधिकार छ, र यस्तो अधिकारलाई आवश्यक भएमा सामाजिक संरक्षणका अन्य साधनबाट परिपूरण गरिनेछ ।

४. प्रत्येक व्यक्तिलाई आफ्नो हितको रक्षाको लागि ट्रेड युनियन गठन गर्ने र त्यसमा सम्मिलित हुन पाउने अधिकार छ ।

**धारा २४**

प्रत्येक व्यक्तिलाई कार्य घण्टाको र तलबी आवधिक विदाको मनासिव सीमा सहितको आराम र विश्रामको अधिकार छ ।

**धारा २५**

१. प्रत्येक व्यक्तिलाई आफ्नो र आफ्नो परिवारको स्वास्थ्य र कल्याणको लागि खाद्यान्न, कपडा, आवास र औषधोपचारको सुविधा र आवश्यक सामाजिक सेवाहरु लगायत पर्याप्त जीवनस्तरको अधिकार तथा वेरोजगारी, विरामी, अशक्तता, विधवा, बुढेसकाल वा आफ्नो काबू बाहिरका परिस्थितिहरुमा जीविकोपार्जनका उपायका अभावमा सुरक्षा पाउने अधिकार छ ।

२. आमा र शिसुहरुलाई विशेष स्याहार र सहायता पाउने अधिकार छ । विवाह भई वा नभई

जन्मेका सम्पूर्ण बालबालिकाहरुले समान सामाजिक संरक्षण पाउनेछन् ।

**धारा २६**

१. प्रत्येक व्यक्तिलाई शिक्षाको अधिकार हुनेछ । कम्तिमा प्रारम्भिक र मौलिक तहमा शिक्षा निःशुल्क उपलब्ध हुनेछ । प्रारम्भिक शिक्षा अनिवार्य हुनेछ । प्राविधिक तथा व्यबसायिक शिक्षा सबैका लागि सामान्यतः प्राप्य र पहुँचयोग्य बनाईनेछ र उच्च शिक्षा क्षमताका आधारमा सबैलाई समान रुपमा पहुँचयोग्य हुनेछ ।

२. मानवीय व्यक्तित्वको पूर्ण विकास र मानव अधिकार तथा मौलिक स्वतन्त्रताहरु प्रतिको सम्मान सुदृढ गर्नेतर्फ शिक्षा निर्देशित हुनेछ । शिक्षाले सबै राष्ट्र तथा जातीय, सामाजिक तथा धार्मिक समूहहरु बीच समझदारी, सहनशीलता र मित्रता प्रवर्द्धन गर्ने तथा शान्ति कायम गर्ने संयुक्त राष्ट्र संघका क्रियाकलापहरुलाई अघि बढाउने छ ।

३. मातापितालाई आफ्ना बालबालिकाहरुलाई दिईने शिक्षाको किसिम छनौट गर्ने पूर्ण अधिकार हुनेछ ।

**धारा २७**

१. प्रत्येक व्यक्तिलाई समुदायको साँस्कृतिक जीवनमा स्वतन्त्र रुपले सहभागी हुने, कला उपयोग गर्ने र वैज्ञानिक प्रगति तथा सोको उपयोगको फाईदा उपभोग गर्ने अधिकार हुनेछ ।

२. प्रत्येक व्यक्तिलाई आफू लेखक भएको कुनै पनि वैज्ञानिक, साहित्यिक वा कलात्मक उत्पादनबाट उत्पन्न हुने नैतिक र भौतिक हितहरुको संरक्षणवाट फाईदा पाउने अधिकार हुनेछ ।

**धारा २८**

प्रत्येक व्यक्तिलाई यस घोषणापत्रमा उल्लिखित अधिकार र स्वतन्त्रताहरु पूर्ण रुपले प्राप्त गर्न सकिने सामाजिक र अन्तर्राष्ट्रिय व्यबस्थाको अधिकार छ ।

**धारा २९**

१. प्रत्येक व्यक्तिको समूदाय, जसमा मात्रै निजको व्यक्तित्वको स्वतन्त्र र पूर्ण विकास

संभव छ, प्रतिको कर्तव्य छ ।

२. आफ्ना अधिकार र स्वतन्त्रताहरुको उपयोग गर्दा, प्रत्येक व्यक्ति अन्य व्यक्तिका अधिकार र स्वतन्त्रताहरुको उचित मान्यता र सम्मान हासिल गर्ने तथा प्रजातान्त्रिक समाजमा नैतिकता, सार्वजनिक व्यबस्था र जनकल्याण हासिल गर्ने एक मात्र उद्देश्यकालागि कानूनले निर्धारण गरेका प्रतिवन्धहरुको मात्र अधिनमा रहने छ ।

३. संयुक्त राष्ट्र संघका उद्देश्य र सिद्धान्तहरुको प्रतिकूल हुने गरी कुनै पनि अवस्थामा यी अधिकार र स्वतन्त्रताहरुको उपभोग गर्न पाईने छैन ।

**धारा ३०**

यस घोषणापत्रमा उल्लिखित कनै पनि अधिकार र स्वतन्त्रताहरु नष्ट गर्ने उद्देश्यले कुनै पनि कृयाकलापमा संलग्न हुन पाउने वा कुनै पनि कार्य गर्न पाउने अधिकार कुनै पनि राष्ट्र, समूह वा व्यक्तिलाई प्रदान गर्ने गरी यस घोषणापत्रमा उल्लिखित कुनै पनि कुराको व्याख्या गरिने छैन